# Contents

# तुङदुङ्गे मुन्धुम: किरात लिम्बू जातिको मौलिक सांस्कृतिक परम्परा र इतिहासको जीवन्त दस्तावेज


**सार**

तुङदुङ्गे मुन्धुम किरात लिम्बू समुदायको एक महत्वपूर्ण मौखिक ज्ञान हो, जुन केवल धार्मिक वा पौराणिक कथा मात्र होइन, बरु यो समुदायको ऐतिहासिक स्मृति, सांस्कृतिक पहिचान र वंशीय चेतनाको सजीव दस्तावेज हो। यो आख्यान विशेषगरी साँबा थरमा प्रचलित छ र पुस्तौँदेखि मौखिक रूपमा जीवित छ। तुङदुङ्गे मुन्धुमले किरात लिम्बूहरूको प्राचीन बसाइँसराइ, सामाजिक संरचना र सांस्कृतिक मूल्यहरूलाई समेट्छ। यो हिन्दू वेदहरू जत्तिकै गहिरो र बौद्धिक छ, जसले आध्यात्मिक दर्शन, सामाजिक एकता र ऐतिहासिक तथ्यहरूलाई जोड्छ।

यो लेखले तुङदुङ्गे मुन्धुमको सांस्कृतिक, सामाजिक र ऐतिहासिक महत्वलाई मानवशास्त्रीय, ऐतिहासिक र समाजशास्त्रीय दृष्टिकोणबाट विश्लेषण गर्छ। डा. नवराज सुब्बाको अनुसन्धान (*An Investigation of Tungdunge Mundhum, A Kirat Mythology*, 2023) मा आधारित यो अध्ययनले मुन्धुमलाई मिथकको सट्टा ऐतिहासिक र सांस्कृतिक दस्तावेजको रूपमा प्रस्तुत गर्छ। यो कथाले साँबा थरको पहिचान, सेन वंशसँगको सम्बन्ध र किरात समुदायको सांस्कृतिक निरन्तरतालाई उजागर गर्छ। तुङदुङ्गे मुन्धुमले आधुनिक समयमा लिम्बू समुदायलाई आफ्नो सांस्कृतिक जरा र गौरवप्रति सचेत बनाउँदै सामाजिक एकता र पहिचानको संरक्षणमा योगदान पुऱ्याउँछ।



**शब्दकुञ्जी :** आदिवासी इतिहास र परम्परा, तुङदुङ्गे मुन्धुम, ऐतिहासिक दस्तावेज, किरात लिम्बू साँबा, पवित्र र महान पैत्रिक पूजा संस्कार

## १. परिचय

मुन्धुम किरात समुदायको साझा मौखिक परम्परा हो, जसमा उनीहरूको धर्म, संस्कृति र इतिहासका कथाहरू समेटिएका छन् (Chemjong, 1965)। यो परम्परा लिम्बू, राई, धिमाल जस्ता किरात समुदायहरूमा फरक-फरक रूपमा जीवित छ (Chemjong, 2003)। तुङदुङ्गे मुन्धुम लिम्बू समुदायको साँबा थरमा विशेष रूपमा प्रचलित छ। यो मुन्धुम कोशी बराह क्षेत्रका राजा कोकहा-बराहाका कान्छा छोरा तुङदुङ्गेको यात्रासँग सम्बन्धित छ। उनी आफ्ना दाजुभाइ खोज्न सप्तकोशीबाट अरुण, बरुण, मेवा खोला र तम्बर क्षेत्रतर्फ गएका थिए (Chongbang, 2009)।

यो कथा केवल धार्मिक कथा होइन, बरु किरात लिम्बूहरूको प्राचीन बसाइँसराइ, वंशीय सम्बन्ध र सामाजिक संरचनाको दस्तावेज हो। डा. नवराज सुब्बाको पुस्तक *An Investigation of Tungdunge Mundhum* (2023) ले यो कथालाई ऐतिहासिक, पुरातात्विक र सामाजिक प्रमाणहरूसँग जोडेर विश्लेषण गरेको छ। यो लेखले तुङदुङ्गे मुन्धुमलाई सांस्कृतिक सम्पदा, ऐतिहासिक स्रोत र सामाजिक एकताको आधारको रूपमा हेर्छ। यस मुन्धुमले किरात लिम्बू समुदायको पहिचान, सांस्कृतिक गौरव र ऐतिहासिक निरन्तरतालाई बलियो बनाउँछ।

## २. शोध-विधि

### २.१ शोधको प्रकार

यो अध्ययन गुणात्मक शोध विधिमा आधारित छ, जसले तुङदुङ्गे मुन्धुमको सांस्कृतिक, सामाजिक र ऐतिहासिक महत्वलाई विश्लेषण गर्छ। निम्न विधिहरू प्रयोग गरिएका छन्:

- **ऐतिहासिक विश्लेषण**: मौखिक परम्परा, फेदाङ्बाहरूको अभिलेख, किरात लिम्बू सम्बन्धी पुस्तकहरू, पत्रिकाहरू र शैक्षिक लेखहरूको अध्ययन।

- **सांस्कृतिक अध्ययन**: मुन्धुममा समेटिएका रीतिरिवाज, विश्वास र प्रतीकहरूको व्याख्या।
- **क्षेत्र अध्ययन**: किरात लिम्बू बस्तीमा साक्षात्कार र अनुष्ठानहरूको अवलोकन।

### २.२ तथ्याङ्क संकलन

- **प्राथमिक तथ्याङ्क**:
  - ५ जना फेदाङ्बा/येबा/युमा (धार्मिक विशेषज्ञ) र १० जना लिम्बू बुढापाकासँग गहन अन्तर्वार्ता।
  - निङलेखु, वरूमहाङ, कुरूम्बाङ लिम्बू थरका तुङदुङ्गे मुन्धुम ज्ञातासित फेसबुक मेसेन्जरमा गहन अन्तरवार्ता।
  - तुङदुङ्गे मुन्धुम सम्बन्धी अनुष्ठानहरूको अवलोकन।
- **द्वितीयक तथ्याङ्क**: किरात लिम्बू इतिहास सम्बन्धी पुस्तकहरू, जर्नलहरू, थेसिसहरू र सरकारी अभिलेखहरू।

### २.३ डेटा विश्लेषण

- **विषयगत विश्लेषण**: मुन्धुमका मुख्य विषयहरू (सृष्टि कथा, नैतिक शिक्षा, चिकित्सा ज्ञान) को अध्ययन।
- **तुलनात्मक अध्ययन**: तुङदुङ्गे मुन्धुमलाई साँबाबाहेक अन्य थरी लिम्बूमा प्रचलित रहेका तुङदुङ्गेसम्बन्धी मुन्धुम तथा राई र धिमाल समुदायमा पाइने मुन्धुमसित तुलनीय जीवित आख्यानहरूसँग तुलना।
- **ऐतिहासिक तुलना**: सेनवंशबाट उद्भव भएका योङहाङ, चबेगु, लिङदेन लिम्बू वंशावलीहरूसित तुलनात्मक अध्ययन। यसमा किरात लिम्बू सम्बन्धी विद्यमान अध्ययनहरूसँग पनि तुलना गरिएको छ।

### २.४ नैतिक विचार

- **सहमति**: अन्तर्वार्तामा सहभागीहरूले शोधको उद्देश्य बुझेर सहमति दिएका थिए।
- **सांस्कृतिक संवेदनशीलता**: मुन्धुमको पवित्र जानकारीलाई सम्मानपूर्वक प्रस्तुत गरिएको छ।
- **गोपनीयता**: सहभागीहरूको व्यक्तिगत विवरण गोप्य राखिएको छ।

### २.५ सीमितताहरू

- मुन्धुम मौखिक परम्परामा आधारित छ, लिखित स्रोतहरू सीमित छन्।
- पुराना फेदाङ्बाहरूको जानकारी लिखित रूपमा उपलब्ध छैन।
- ऐतिहासिक घटनाहरूको मिति र तथ्यहरू मिथकसँग मिसिएका छन्।

### २.६ अध्ययनको संकल्पनात्मक ढाँचा

यस संकल्पनात्मक ढाँचाले तुङ्दुङ्गे मुन्धुमलाई तीन आयाममा हेर्दछ:

(१) सांस्कृतिक (पहिचान, आध्यात्मिकता),
(२) ऐतिहासिक (वंशावली, भाषिक प्रमाण),
(३) सामाजिक (आधुनिक प्रभाव)।




## ३. तुङदुङ्गे मुन्धुमको सांस्कृतिक महत्व

### ३.१ तुङदुङ्गे मुन्धुमको कथानक

तुङदुङ्गे मुन्धुमले कोशी बराह क्षेत्रका राजा कोकहा-बराहाका कान्छा छोरा तुङदुङ्गेको कथा बताउँछ। उनी आफ्ना दाजुभाइ खोज्न सप्तकोशीबाट अरुण, बरुण, मेवा खोला र तम्बर क्षेत्रतर्फ यात्रा गर्छन्। यो कथाले तुङदुङ्गेलाई साँबा वंशले मेवा खोलामा स्वागत गरेको र उनले साँबालाई शिक्षा र शक्ति दिएको प्रसंग समेट्छ (Chongbang, 2009)। यो कथा लिम्बू समुदायको सांस्कृतिक र ऐतिहासिक स्मृतिको प्रतीक हो।

### ३.२ आध्यात्मिक र अनुष्ठानिक महत्व

तुङदुङ्गे मुन्धुम साँबा वंशको कुलपूजाको आधार हो। प्रत्येक तीन वर्षमा साँबा पुजारीहरूले *माङथान* मा अनुष्ठान गर्छन्, जहाँ तुङदुङ्गेलाई पुर्खा देवताको रूपमा पूजा गरिन्छ। यो अनुष्ठानमा बोका र भालेको बलि, मुन्धुमको पाठ र परिवारको स्वास्थ्य, सन्तान र समृद्धिको कामना

गरिन्छ (Chemjong, 2009)। यो परम्पराले किरात लिम्बूहरूको आध्यात्मिक दर्शनलाई बलियो बनाउँछ।

यो अनुष्ठानले सामाजिक एकता र सांस्कृतिक निरन्तरता कायम राख्छ। तुङदुङ्गे मुन्धुमले लिम्बू समुदायलाई नैतिक मूल्य, सामाजिक अनुशासन र आध्यात्मिक चेतनासँग जोड्छ। यो कथा केवल धार्मिक कथा नभई जीवनदर्शन र सामुदायिक एकताको स्रोत हो।



### ३.३ जातीय पहिचानको संरक्षण

तुङदुङ्गे मुन्धुमले साँबाभित्रका विभिन्न उपथरहरूको पहिचानलाई जोगाउँछ। यो कथाले मेवा खोलामा तुङदुङ्गेको स्वागतको प्रसंगमार्फत साँबा वंशको ऐतिहासिक र सांस्कृतिक महत्वलाई उजागर गर्छ। लिम्बू समुदायमा फैलिएको यो कथाले साँबा थरलाई किरात समुदायको ठूलो ढाँचाभित्र विशिष्ट पहिचान दिन्छ।

मुन्धुमको मौखिक परम्पराले लिम्बू भाषा, संस्कृति र परम्परागत ज्ञानलाई संरक्षण गर्छ। ‘मुरा’ (मुख) र ‘थुम’ (बलियो) शब्दबाट बनेको मुन्धुमले *श्रुति* र *स्मृति* मार्फत कथा र ज्ञानलाई पुस्तौँसम्म जीवित राखेको छ (Chemjong, 2003)। यो परम्पराले प्रभुत्वशाली संस्कृतिको आत्मसातीकरणविरुद्ध किरात लिम्बू पहिचानलाई बलियो बनाउँछ।

### ३.४ बृहत् किरात संस्कृतिसँगको सम्बन्ध

तुङदुङ्गे मुन्धुमले लिम्बू समुदायलाई राई, धिमाल र अन्य किरात समूहहरूसँग पनि जोड्छ। डा. सुब्बाको अनुसन्धान (2023) ले तुङदुङ्गे मुन्धुम र धिमालको ढङढङ्गे पूजाबीच समानता देखाउँछ, जसले साझा पुर्खा र सांस्कृतिक उत्पत्तिको संकेत गर्छ। यो कथामा किरात, युमा, शैव, बोन धर्मको मिश्रण पाइन्छ, जसले किरात संस्कृतिको गहिराइ र विविधता देखाउँछ। जसले किरात समुदायको साझा सांस्कृतिक धरोहरलाई जोड्छ।

## ४. तुङदुङ्गे मुन्धुमको ऐतिहासिक महत्व

### ४.१ वंशावली र ऐतिहासिक प्रमाण

तुङदुङ्गे मुन्धुमले किरात लिम्बू समुदायको ऐतिहासिक वंशावली र बसाइँसराइको दस्तावेजीकरणमा सहजीकरण गरेको छ। यो कथाले तुङदुङ्गेलाई कोशी बराह क्षेत्रका सेन वंशका राजा कोकहा-बराहाका कान्छा छोराको रूपमा चित्रण गर्छ। सुब्बाको अध्ययन (2023) ले सेन र साँबा वंशबीच रक्त सम्बन्ध उजागर गरिदिएको छ।

ऐतिहासिक रूपमा, सेन वंशले १४औँदेखि १८औँ शताब्दीसम्म विजयपुर र चौदण्डीमा शासन गरे (Subba, 1999)। सन् १३२३ तिर सेन वंशका चार भाइ धनकुटा, तेह्रथुम, पाँचथर र संखुवासभामा फैलिए, जसलाई वंशावलीमा सेनेहाङ भनिन्छ (Yonghang, 2011; Sen Chobegu, 2007)। यो वंश लिम्बू समुदायमा अन्तरघुलित भयो। गोरखा विस्तारको पृष्ठभूमिमा कोशी बराह क्षेत्रमा चौदण्डी राज्यको पतन (सन् १७७३ पछि) तुङदुङ्गे मुन्धुमको घटनाक्रम घटेको सङ्केत वंशावली र इतिहासमा पाइन्छन्। त्यसबेला त्यहाँका सेन शासकलाई माङ अर्थात् देवता भनिन्थ्यो।

मुन्धुममा तुङदुङ्गेलाई मेवा खोलामा सुलुङदिन साँबाले स्वागत गरेको प्रसंग आउँछ। यो मौखिक परम्पराका रूपमा रहेको जातीय सम्झनालाई नन्दप्रसाद चाङबाङ साँबाले १९ औँ शताब्दीमा लिपिवद्ध

गरिदिएका थिए। करिव १६० वर्षअघि दस्तावेजीकरण गरिएको यस मुन्धुमको ऐतिहासिकता विभिन्न प्रमाणहरूले पुष्टि गरेका छन् (Chongbang, 2009; Subba, 2023)। यो मुन्धुमी आख्यानले सेन र साँबा वंशको सम्बन्धलाई जोड्छ र किरात लिम्बू समुदायको ऐतिहासिक गतिशीलता देखाउँछ।

### ४.२ पुरातात्विक, भाषिक र ऐतिहासिक सन्दर्भ

तुङदुङ्गे मुन्धुम अध्ययन क्रममा किरात, राई, लिम्बू, साँबासम्बन्धी पुरातात्विक र भाषिक प्रमाणहरू केलाएर हेरिएको छ। किरात जातिको अतीत काशी र सुमेर जतिसंग गाँसिएको पाइन्छ र एकताका मेसोपोटेमियाका लेप्मु जातिसँग लिम्बू जातिको पूर्वजको नाता रहेको भाषाशास्त्रीको ठम्याइ छ (Pokhrel, 1998)। पुरोहित (सामन) वा अगुवाबोधक साँबा शब्दको पदचिन्ह खोज्दै जाँदा साँबाका पूर्वज अर्थात् किरात लिम्बूका एक थरी पुर्खाले छिचोलेका यात्रामार्गमा केही न केही भौगोलिक र भाषिक चिन्हहरू हालसम्म पाइन्छन्। पुराना र ठूला यात्रामार्गमा पर्ने चीन, बर्मा, कश्मीर, जुम्ला, कोशीबराह क्षेत्र र अहिलेको मेवाखोला–तम्बरखोला क्षेत्रमा कुनै न कुनै रूपमा साँबा पुर्खा सम्बन्धित शब्दहरू जस्तै जातीय तथा भौगोलिक नाम, प्रशासकीय पद, चिन्हहरू भेटिन्छन् (Chemjong, 2003a; Oli, 1988)।

कालान्तरमा किरात वंशकै एक हाँगा सेन वंश कोशीबराह क्षेत्रबाट उक्लेर लिम्बुवानमा करिव ८०० वर्षअघि प्रवेश गऱ्यो र लिम्बू जातिमा बिलय भयो। फलस्वरूप करिव ७००-८०० वर्षअघि कतिपय सेनले साँबा थर धारण गरे (Subba, 2024)। विकासक्रममा साँबा परिवारभित्र विभिन्न उपथर जन्मिए। वंशावली अध्ययने फयङ उपथर करिव ३०० वर्षअघि उत्पत्ति भएको देखिन्छ। उसबेला साँबा परिवारका एक सदस्यले लगाउने लुगा “फयङ फयङ” हावामा हल्लिएकाले उक्त विशेषणबाट उनको र पछि उनका सन्तानको थर फयङ रहन गएको भन्ने कथन वंशावलीमा पाइन्छ। जेहोस् नेपालको पूर्वी हिमाली ताप्लेजुङ जिल्लामा पर्ने मेवा खोलामा साँबा थर किरात लिम्बूको एक जातिमा स्थापित हुनु सामाजिक-राजनीतिक प्रभावको संकेतक हो।

यो तुङदुङ्गे मुन्धुम कथाको पृष्ठभूमिमा लिम्बूवान-सिक्किम सीमा विवाद, गोरखा-लिम्बूवान तनाव र युद्धद्वारा सिर्जित राजनीतिक तथा सामाजिक वातावरण लुकेको छ। सन १८ औँ तथा विक्रम सम्बतको १९ औ शताब्दीमा धेरै मात्रामा लिम्बूहरू लिम्बुवानबाट लिम्बुवानभित्र र बाहिर बसाइँसराइ गरेको इतिहास पाइन्छ (Chemjong, 1974)। सोही क्रममा फयङ साँबा थरका उल्लेख्य सदस्यहरू मेवा खोलाबाट आठराई हाङपाङ, संखुवासभा, पाँचथर र सिक्किममा बसाइँ सरे, जसले समुदायको लचिलोपन देखाउँछ।

साँबाहरूले लिम्बुवानको तर्फबाट सिक्किम र गोरखासित लामो समय लडाइँ लडे, एक युद्धमा शिपा र फाक्ते जस्ता वीर साँबाहरू सहिद भएका थिए (Samba Mingsra, 2018)। गोरखाली-लिम्बुवान युद्धताका गरिएको वंशावली अध्ययनमा साँबा वंश लगायत काशी वंशका लिम्बू र सेन वंशका पुर्खा सिमाङगढमा रहँदा एकै वंश रहेको वंशावली पत्ता लागेपछि लिम्बूहरू लिम्बुवान-गोरखाली युद्ध रोक्न राजी भए र नुनपानी सन्धि भयो (Chemjong, 1974)। लिम्बुवान क्षेत्रमा लामो कालसम्म सिक्किमको सीमा विवादले उत्पन्न दवाव र गोरखाली प्रभाव बढिरहेको संक्रमण कालमा सन् १७४३ अर्थात् वि.स. १८०० सालतिर उल्लेख्य संख्यामा फयङ साँबा मेवाखोलाबाट आठराई हाङपाङ, संखुवासभा, पाँथचर, सिक्किम बसाइँसराइ गरेको फयङ साँबा वंशावली बताउँछ (Subba, 2024) ।

### ४.३ लिम्बू थरहरूको बसाइँसराइ

साँबा थरका लिम्बू मात्र त्यसबेला बसाइँसराइ गरेनन्। अन्य धेरै थरी लिम्बू समुदाय पनि उक्त ऐतिहासिक, राजनीतिक र सामाजिक कारणले बसाइँसराइ गरेका थिए।

- **साँबा थर**: साँबा लिम्बूहरूको बसाइँसराइ सिक्किम र लिम्बुवानबीचको सिमाना विवादसँग सिधा जोडिएको छ। यो विवादले लिम्बूहरूको जमिन, संस्कृति र राजनीतिक अधिकारमा गहिरो असर पारेको छ। साँबा भित्र धेरै थरहरू छन् र यिनीहरूको बसाइँसराइको प्रवृत्ति फरक फरक छ। तर साँबा थरमध्येको एक उपथर फयङ साँबा मेवा खोला (ताप्लेजुङ)

बाट सन् १७४३ तिर हाङपाङ, संखुवासभा, पाँचथर र सिक्किममा बसाइँ सरे (Subba, 2024)। प्रमुख कारण: सिक्किमसँगको सीमा विवाद र गोरखाली विस्तारले उत्पन्न तनाव थिए। यिनीहरू लिम्बुवान सेनालाई सघाउन चैनपुर जाने गर्दथे सोही क्रममा यिनीहरू आठराई हाङपाङ, संखुवासभा र पाँचथरमा पुगेर उब्जाउ र सुरक्षित ठानेर उक्त क्षेत्रमा बसाइँसराइ गरे। कोही सिक्किम र असमतर्फ लागे।

- **लावती थर**: लावती थरको विशेष बसाइँसराइमाथि प्रत्यक्ष अध्ययन अझै भएको छैन। तर ऐतिहासिक स्रोतहरू (जस्तै Chemjong, 1966 र Regmi, 1976), सांस्कृतिक समानता (Subba, 1992), किपट प्रथा, मौखिक कथा (Bhandari, 2010 र Kafle, 2065), र जनगणनासम्बन्धी तथ्याङ्कहरूले लावती लिम्बूहरू मेवाखोला क्षेत्रबाट पाँचथर, इलाम, र तेह्रथुमतर्फ सरेको कुरा पुष्टि हुन्छ। यस्तो बसाइँसराइ मुख्यतः १८औं र १९औं शताब्दीमा जमिनको खोजी, जनसङ्ख्या वृद्धि, बौद्ध धर्मको प्रभाव र राजनीतिक अस्थिरता र आपसी सामाजिक सम्बन्धका कारण भएको हो।
- **माबुहाङ थर**: माबुहाङ थरका लिम्बूहरूको बसाइँसराइ १६औँ-१९औँ शताब्दीको दौरान मेवा खोला → पाँचथर → इलाम → धनकुटा/तेह्रथुम गरी विभिन्न क्षेत्रमा भएको प्रमाणित हुन्छ (Subba, 1999, 2001)। यसको अध्ययनका लागि वंशावली, औपनिवेशिक अभिलेख, मौखिक इतिहास, र भौगोलिक प्रमाणको समन्वय आवश्यक छ। बसाइँसराइको कारण: सुरक्षा र जमिनको आवश्यकता प्रमुख थिए।
- **तिलुङ थर**: सिवा (ताप्लेजुङ) बाट संखुवासभा, भोजपुर र सुनसरीमा बसाइँसराइ सरेका हुन्। कारण: युद्धको त्रास र कृषियोग्य जमिनको खोजी (Subba, 1999a)।

माथि दिइएका केही उदाहरण मात्र हुन्। जे होस् १८ औँ-१९औँ शताब्दीमा लिम्बूहरूमा भएका बसाइँसराइका प्रवृत्तिले उक्त समुदायको भौगोलिक र सामाजिक संरचनामा ठूलो परिवर्तन ल्यायो।

## ४.४ मानवशास्त्रीय दृष्टिकोण

डा. नवराज सुब्बाको अध्ययन (2023) ले तुङ्दुङ्गे मुन्धुमलाई मानवशास्त्रीय दृष्टिकोणबाट विश्लेषण गर्छ। उनले सामाजिक-जैविक मोडेल प्रयोग गरी सेन र साँबा वंशबीच रक्त सम्बन्ध स्थापित गरेका छन्। यो कथा केवल लोककथा नभई ऐतिहासिक दस्तावेज हो, जसले किरात सभ्यताको सांस्कृतिक र ऐतिहासिक सम्बन्धलाई उजागर गर्छ।

सुब्बाले जनस्वास्थ्य, साहित्य, संस्कृति, मनोविज्ञान र मानवशास्त्रको ज्ञान प्रयोग गरी यो कथालाई धार्मिक मिथकभन्दा बाहिरको सामाजिक चेतनाको रूपमा प्रस्तुत गरेका छन्। उनको अध्ययनले साँबा, योङहाङ, चबेगु, लिङदेन जस्ता लिम्बू थरहरूलाई सेन वंशसँग जोडिएको पक्षलाई थप प्रकाशमा ल्याइदिएको छ। यो वंशगत सम्बन्ध देखाउने कार्य ऐतिहासिक तथ्य, वंशावलीका आधार अतिरिक्त सामाजिक-जैविक मोडलको सिद्धान्तमा आधारित छ (Wilson, 1975)।

## ४.५ थप अनुसन्धान

तुङ्दुङ्गे मुन्धुमका विभिन्न कथाहरूले तुङ्दुङ्गेलाई बहुआयामिक चरित्र भएको पात्रको रूपमा देखाउँछन्। कतिपय कथामा तुङ्दुङ्गेलाई भोटेहरूले मारेको र तम्बर खोलामा बगाएको कथा उल्लेख छ (Sherma, 2009)। निङलेखु लिम्बू थरको तुङ्दुङ्गे सम्बन्धी मुन्धुममा तुङ्दुङ्गेलाई नचिनेर पहिले उनलाई बाँधेको र पछि चिनेपछि थान बनाएर पूजा गरेको आख्यान छ। यी कथाहरूले तुङ्दुङ्गेलाई सन्त, लडाकु र रोमान्टिक पात्रको रूपमा चित्र गर्छन्।

यी मिथकीय कथाहरू भए तापनि कुनै न कुनै ऐतिहासिक सत्यता गाँसिएको वा लुकेको हुन सक्छ। अर्थात् रूपमा जे भए पनि सारमा कुनै न कुनै कुरा भएको हुनसक्छ। उदाहरणका लागि, गोरखाली विस्तार (१७७३ पछि) को समयमा तुङ्दुङ्गे चौदण्डीबाट विस्थापित भएकाले प्रतिरोध गरेको हुनसक्छ र सुराकीद्वारा उनको हत्या गरिएको पनि हुन सक्छ। जेहोस् सबै मिथकहरू हुबहु सत्य नभए तापनि यसले तुङ्दुङ्गेको केवल मिथक मात्र नभएर एक ऐतिहासिक घटनाक्रम र उपस्थितिलाई

भने सावित गरेका छन्। प्रचलित मिथकहरू कति मात्रामा प्रतीकात्मक हुन् र कति चाहीँ सत्य हुन् पुष्टि गर्नलाई थप अनुसन्धान आवश्यक छ।

## ५. निष्कर्ष

तुङदुङ्गे मुन्धुम किरात लिम्बू समुदायको सांस्कृतिक, सामाजिक र ऐतिहासिक सम्पदा हो। यो कथाले साँबा थरको पहिचान, सेन वंशसँगको सम्बन्ध र किरात समुदायको बसाइँसराइलाई दस्तावेजीकरण गर्छ। डा. नवराज सुब्बाको अनुसन्धानले यो कथालाई मिथकभन्दा बाहिर ऐतिहासिक दस्तावेजको रूपमा स्थापित गर्छ।

आज पनि तुङदुङ्गे मुन्धुम जीवित परम्पराको रूपमा नेपाल, भारत, भुटान र विदेशमा प्रचलित छ। यो कथाले लिम्बू समुदायलाई सांस्कृतिक एकता, पहिचान र गौरवसँग जोड्छ। त्यसैले तुङदुङ्गे मुन्धुम केवल विगतको स्मरण होइन, बरु भविष्यको लागि सांस्कृतिक जड हो।

## सन्दर्भ-सूची


- Bhandari, K. (2010). *Oral Traditions of the Limbus in Eastern Nepal.*(Locally collected and Unpublished, Study of Oral History, Panchthar)
- Chemjong, I.S. (1965). *Kirat Mundhum Khahun*. Athrai Limbuwan Khagendra Sing Angbuhang.
- Chemjong, I. S. (1966). *Kirat Limbu Vamsavali.* Kirat Yakthung Chumlung.
- Chemjong, I. S. (1974). *Kirat Kalin Bijayapurko Itihas.* (1st ed.) Kathmandu Nepal: Tribhuvan University, Kirat Language and Literature.
- Chemjong, I. S. (2003). *Kirat Mundhum* (Kiratko Veda) (3rd ed.). Lalitpur: Kirat Yakthung Chumlung.
- Chemjong, I. S. (2003a). *Kirat History and Culture*. Lalitpur: Kirat Yakthung Chumlung.

- Chongbang Samba, B. P. (2009). *Chongbang Samba Bangsawali* (1st ed.). Taplejung: Bangsawali Sankalan Samiti, Nepal.
- Kafle, B.K. (2065). *Culture and traditions of the Limbu caste*. (Description of the social structure and regional mobility of the Limbus in Nepali).
- Oli, S. (1988). Salakhala Nepali Kala. *Kirateswar Sandesh*. (ed: Swami Prapannacharya), Jhapa Lakhanpur Sitapuri, Kirateswar Prakashan.
- Pokhrel, B. K. (1998). *Khas Jatiko Itihas,* Biratnagar, Udatta Anusandhan.
- Regmi, M.C. (1976). *Landownership in Nepal*. University of California Press.
- Samba Mingsra (2018). *Samba Mingshra Sangchumbhoko Bidhan 2075*, (2018) Mewakhola Taplejung.
- Sen Chobegu, B. B. (2007). *Kirat Senehang Limbu Bansawali.* Kirat Thegim Bansawali Prakashan Samiti.
- Sherma, C. K. (2009). *Kiratka Gatha, Katha ra Lok Kathaharu* (2nd ed.). Panchthar: Amar Bahadur Yokpangden, Nirantara Kandangwa Yokpangden.
- Subba, T. B. (1992). *Migration of Limbus in Eastern Nepal.* Delhi: Cultural Publishing House
- Subba, T.B. (1999). *Politics of Culture.* Sangam Books.
- Subba, T. B. (1999a). Politics of Culture: A Study of Three Kirata Communities in the Eastern Himalayas. Chennai: Orient Longman.

- Subba, T. B. (2001). T*enjong Namshang Genealogy*. Gangtok: Sikkim Tribal Research Institute.
- Subba, N.R. (2023). *An Investigation of Tungdunge Mundhum, A Kirat Mythology*, Biratnagar, Nepal. Hamro Idea.
- Subba, N.R. (2024). *Genealogy of Phyang Samba*, Biratnagar, Nepal. Hamro Idea.
- Wilson, E. O. (1975). *Sociobiology: The new synthesis*. Cambridge, MA: Belknap.
- Yonghang, B. B. (2011). *Yonghang Bangsawali.* (B. R. Subba, Ed.) (1st ed.). Ilam.